# ग्वारमा गुभाजु यागु संक्षिप्त जिवन

# व

# आर्य नामसंगीति-स्तोत्र व धारणी



ग्वारमा गुभाजु

# ग्वारमा गुभाजु यागु संक्षिप्त जिवन

# व

# आर्य नामसंगीति-स्तोत्र

# व

# धारणी

---

---

---

प्रकाशक

**मूलवाद्य गुरु तन्त्रमुनि शाक्य**

यम्पि महाविहार, ईवही, वेलाछें, यल



## प्रकाशकको परिचयः

मूलवाद्य गुरु तन्त्रमुनि ब्रम्हचर्य शाक्य
कोबाहाल टोल, भजन खलः

वाद्य गुरु तन्त्रमुनि ब्रम्हचर्य शाक्य
यम्पि महाविहार भजन खलः

तन्त्रमुनि ब्रम्हचर्य शाक्य
एम्पि महाविहार सुधार समिति-अध्यक्ष, ललितपुर

तन्त्रमुनि ब्रम्हचर्य शाक्य
एम्पि महाविहार दायक परिषद्-सभापति, ललितपुर

तन्त्रमुनि ब्रम्हचर्य शाक्य
शंखमोल एता पौ मार्ग तथा
गणेश मार्ग टोल सुधार समिति-अध्यक्ष, काठमाण्डौ

# प्रकाशकया पाखें छत्वाचा खँ ।

श्रद्धेय हनेवहम्ह ग्वारमा गुभाजु छम्हनं यल देशया लोकहव्रा:म्ह अथेहे नां जाम्ह खः । वसपोलयात म्ह मस्यूपिनं म्हो हे जक जुइ । वसप्रोल वैद्य ज्या याना आपलं मनूतयेत रोग लंका सेवा याना विज्यना च्वम्ह नं जुया च्वन । जित न्हापाया खँ छकुचा लुमंसे वः । कुम्भेश्वर क्रान्ति वहिलिर्पिनि वेखानारायण खड्गी चैत्य पनिस्था याना अहोरात्री पूजापाठ याना वला न्यायकुगु इले जि स्वयं थगहहे त्रिरत्न वाज्राः धः धः पाः थाना नगर परिक्रम यानागु खः । विभिन्न प्रकारया वाधा अरचना प्यहां वल । अथे जुसा वेखा नार ायण खड्गी वला न्यायकुली उगु इले ग्वारमा गुभाजु गुभाजु जुयाहे ज्या याना विज्यात । वेखानारायण खड्गी अहोरात्रपुजाय् निसलापा छायके त्यन धकः थपासिनं विरोधया सः पिकाल । तर अथे जुसानं वसपोलयात ग्वहाली व है पा व्यूपिनं आपलं दतः ।

भगवोन वुद्धया धर्मया ज्याय् न्हयाग्हसिनं याये ज्यू । सकसित लोखा चाः । वं याय् ज्यू थ्वं याय् मज्यू धैगु मदु । सकसित लसकुस दु । तर छाय् गथे खः भिंगु ज्याय् मार वः । न्हयाक्वहे विरोध वसा नं ग्वारमा गुभाजु छतिहे निगसपन मजू । गुलि विरोध वल उलिहे वसपालयाके सहन शीलता व धैर्य ब्वलना वल । वसपोल थःम्ह न्यायकुगु उगु ज्या सफल याना तोता विल ।

जिगु मिखाय् वसपोलयाके त थःसुं व अहम् स्वभाव मखना । जिं वसपोलया थज्यागु च्व छाय् वहगु गुण धर्मत खना जि अतिकं प्रभावित जुया वसपोलयागु संक्षिप्त जीवनया लिघंसाय् स्वयम् धः हे प्रकाशक जुया सफू छापे यायगु मनमुवा वगु जुल । अन्तय् वसपोल हनेवहम्ह ज्योतिष ग्वारमा गुभाजुया सदां सुस्वास्थ्य एवं दीर्घायु भिं-कामना याना च्वना ।

प्रकाशया दातापिं

**श्री तन्त्रमुनि शाक्य प्रमुख** सकल परिवारपिं ।

श्री सम्वत् १९८२ माल जेष्ठ कृष्ण सप्तमीमा बुवा [illegible] र आमा विष्णु कुमारीको कोखवाट कुल घर चुक वहालमा जन्मन भएको थियो । एघार जना सन्तान मध्ये उहाँ मात्र वाँचेका थिए । वाँचेका [illegible] लाउनको निमित्त दुःख थियो तैपनि वुवा आमाले राम्रोसँग हुर्काउनु भयो । जव उहाँ पाँच(५) वर्षको हुनु भयो उहाँलाई हिरण्य वर्ण महाविहारमा लागि वृद्ध धर्मानुसार चुडाकर्म गर्नु भयो र त्यही साल देखि उहाँको पढाइ शुरु भयो । उहाँले घरमै आफ्ना वुवावाट औपचारिक शिक्षा हासिल गर्नु भयो । हुने विरुवाको चिल्लोपात भने झैं उहाँको पढाइ राम्रो भएकोले उहाँलाई नागवाहाल (इतिलन्हे) पाठशालामा भर्ना गराई औपचारिक शिक्षा हासिल गर्न पठाउनु भयो । १९९० सालमा नेपालमा भुकम्पले गर्दा धेरैलाई जनधनको क्षति व्यहोर्नु परेको थियो । त्यो भुकम्पले उहाँको घर पनि क्षति भयो । त्यस वेला उहाँ आठ वर्षको हुनुभएको थियो । त्यस् पछि उहाँले पाठशालामा गई पढ्नु थाल्नु भयो ।

त्यति वेला अहिले जस्तो कपी कलम थिएन, त्यति वेला काठको फल्याक जस्तो वोकेर स्कुल जानु पर्थ्यो र सानो उमेर भएकोले काठको गह्रो फल्याक वोकेर जान उहाँलाई गाह्रो हुन्थ्यो तैपनि पढ्ने सिक्ने ईच्छा भएकोले गाह्रो भएपनि वोक्न नसक्ने भएपनि घिसारेर भएपनि पढ्न जानु हुन्थ्यो । ९, १० वर्षको उमेर मै उहाँले श्राद्ध र यज्ञ होमको विधि पनि सिक्दै जानु भयो ।

त्यस पछाडी उहाँले १२ वर्षमा जजमानी काम गर्न थाल्नु भयो । उहाँले श्रावण महिनामा जजमानहरुको घरघरमा गई पाठ गर्नु पर्थ्यो र उहाँ घर घरमा गई पाठ गर्न दिन दिनै एक महिनासम्म जानु हुन्थ्यो । १२ वर्षदेखि १८ वर्षसम्म पाठ, पूजा, कथा वाचन गर्ने जजमानी काम गर्दै दिन विताउदै जानु

भयो । त्यस बेलासम्म उहाँले स्वयम्भु पुराण, गुणकारद व्यूह लगायत अरु सुत्रहरु वाचन गर्नु हुन्थ्यो । २००० साल १८ वर्षको उमेरमा उहाँको विवाह मिश्री मेजुसंग भयो । उहाँले विवाह भोजमा आफन्त, टोलवासी, साथीभाइ समेत ५०० जनालाई भोज खवाउनु भयो । त्यस बेला भोज खाएर फर्कने बेलामा रोटी दिने चलन थियो उहाँले त्यो रोटी घरमै हलुवाई बोलाई पकाउन लगाउनु भयो । २००१ सालमा उहाँको वुवा रत्नमानज्यूको हिरण्य वर्ण महाविहारको शाक्य मुनि वुद्धको मन्दिरमा पालो आयो र उहाँ त्यस मन्दिरमा ठूलो वाफाचा (पुजारी) वस्नु भयो । श्रावण महिना भएकोले १८ जना व्रत (माँस) वस्ने महिलालाई उहाँको वुवा, उहाँ गुरुजु लगायत सवैले यथासक्य मद्दत गर्नुभयो । त्यसवेला एकजना सध सदस्यको दुई चोटीसम्म पालो आउँथ्यो ।

२००२ सालमा पहिलेको श्रीमतीलाई पारपाचुके गर्नुभयो । त्यहि साल मंसिर महिना योमहि पुन्हीमा ईलाननि, नागवहालको कन्या कुमारीसँग स्वयंवर गरी विवाह गर्नु भयो । विवाह गरेको ४, ५ वर्षसम्म पनि उहाँवाट सन्तान भएन । सन्तान नभएको र जजमानी काममा पनि आम्दानी नपुगेकोले उहाँले पसल पनि थाप्नु भयो र पसलवाट पनि त्यति आम्दानी नभएर खोकना गएर ज्योतिष सिक्ने र हेर्ने इच्छा गर्नुभयो ।

२००९ सालमा उहाँ खोकना गएर वस्नु भयो । त्यहाँ उहाँसँग भज रत्न पनि हुनुहुन्थ्यो, दुवैजना मिली वच्चाहरुलाई अक्षर पढाउने, जजमानी काम गर्ने र चिना हेर्ने, वनाउने काम गर्नु हुन्थ्यो साथ साथै उहाँले सफू (धर्म, सुत्र, धारणीहरुको किताव) पनि धेरै लेख्नुभयो । आफ्नो छोराले धेरै मिहेनत गरेकोले वुवा रत्नमानको मन दुख्यो र आफ्नो छोरालाई वोलाएर आफ्नै घरमा वसी लेखेपनि हुन्छ, अन्त नजाउ, किन वुवा छोरा अलग भएर वस्ने

भनेर घरमै वस्नु भयो। वुवाको आज्ञा मानेर घरमै वस्नु भयो। वुवाको नाति हेर्ने इच्छा ७ वर्ष वितिसक्दा पनि पुरा भएन।

वुवा, आमा, श्रीमती, दिदी इन्द्रमाया समेत ५ जना परिवारमा छोरा एकजनाको चाहना सवैको मनमा थियो। वच्चा हेर्ने मनमा इच्छा गर्दा गर्दै २०१० साल वैशाख शुक्ल नवमीमा वुवा रत्नमानको मृत्यु भयो र उहाँलाई पनि शोक पर्‍यो। त्यसवेला उहाँ २६ वर्षको हुनुहुन्थ्यो। विवाह गरेको ८ वर्ष वितिसके पछि ३१ वर्षको उमेरमा एक जना छोरीको जन्म भयो र जन्म भएको १८ दिनमा अचानक कार्तिक महिनाको म्हःपूजाको दिनमा वच्चाको मृत्यु भयो। मृत्युको शोकले चैत्र पुन्ही २२ धारामा नुहाएर जामाचो चैत्य दर्शन गरी सन्तानको वरदान माग्नु भयो र दश महिना पछि माघ महिना तिर छोरीको जन्म भयो। तर उहाँको छोराको चाहना भने अझै पूरा भएन। उहाँले धर्म गर्ने क्रममा २०१६ साल भाद्र महिनामा आफै अग्रसर भएर वसुन्धरा व्रत, द्वादशी तिर्थ अष्ट वेतराग र चारवटा स्तूप समेतमा गई व्रत धर्म गर्नुभयो। ८ जना समूहमा शुरु गरेको पछि ३० जनासम्मले यो व्रत गर्नु भयो। यो १ वर्षसम्म तृतिया तिथीमा जाने गर्नु हुन्थ्यो।

छोराको चाहनाले उहाँ २०१६ साल मंसिर महिनामा मनकामना जाने निधो गरे र साथी कृष्ण वहादुर ताम्राकार एकजना साथी लिई टुँडिखेलवाट सात घुम्तिसम्म मोटरमा गई त्यहाँवाट हिँडेर ८ दिनपछि मनकामना मन्दिर पुग्नु भयो। त्यहाँ पुगेर मनको इच्छा वर मागी आवश्यक पूजापाठ गरी चार (४) दिन बिताई फर्कनु भयो। फर्केर जहान छोरीसंग यात्राको रमाईलो, दुःख-सुखको कुरा गरेर सुत्नु भयो।

२०१७ सालमा हिरण्य वर्ण महाविहारमा १ वर्षमा ३ महिना (फाल्गुण, चैत्र,

बैशाख महिनामा। उहाँले शाक्य मुनि बुद्धलाई छोराको चाहनाले फुल चढाउनु हुन्थ्यो। यो क्रम २०१८ साल पौष पुन्ही देखि पंच रक्षा देवीको जप, पाठ, पूजा पुरश्चरण गर्नुभयो र पौष पुर्णीदेखि माघ पुन्हेसम्म अन्तको सात दिन परालमा सुतेर १ लाख जप सिध्याउनु भयो। यो धर्मले जगत् संसार उद्धार, सुख, शान्ति होस् भन्ने हेतुले गर्नु भएको थियो र पंच रक्षा देवीको जप, पाठ सिध्याउने अन्तिम दिन यज्ञ गर्दा पंच रश्मी प्रकट भएर दर्शन दिनुभयो र यसको प्रसाद तत्कालीन राजा श्री ५ महेन्द्र सरकारलाई पनि चढाउन जानु भयो र त्यस वापत सरकारवाट रु. १०/- दक्षिणा चढाईवक्स्यो। २०१८ साल पौष महिनामा उहाँको माता विष्णु कुमारीको पनि अकस्मात् हृदयघात वन्द भई मृत्यु भयो। आफ्नो आमाको सत्गतिको लागि उहाँले १ वर्षसम्म तिर्थ सेवा गर्नु भयो।

२०२० सालमा तेस्रो विवाह भिन्छेवहालको वेखा राजको छोरी गुप्तादेवी वज्राचार्यसँग गर्नुभयो। त्यही साल शाक्य मुनि बुद्धलाई चढाई राख्नु भएको फुल यज्ञ होम गरी समाप्त गर्नु भयो। त्यस वेलासम्म उहाँ पूजा, पाठ, गर्न निकै सिपालु भैसकेको थियो। त्यस क्रममा श्री मोन नाथको पूजा भैरवस्थान भैरहेको वेला वज्रराज र वोधिराज दुई जनाले यो केटासँग जामन गुभाजुको अंश छ भन्नु भएको थियो।

२०२१ सालमा दोस्रो श्रीमती कन्या कुमारी अत्यन्तै सिकिस्त विरामी हुनु भयो। श्रीमती विरामी भएकोले चिन्तित हुदै आफूले जानेको ग्रह शान्ति पाठ, पूजा गर्नु भयो, तैपनि उहाँलाई कालगतिले छाडेन र परलोक हुनु भयो। त्यसैको रिसले उहाँले वैद्य कविराजको काम पनि थाल्नु भयो। विरामी हेर्ने, औषधि वनाउने, तन्त्र, मन्त्र, जन्त्रको प्रयोग गरेर सवैको उपकार गरिरहे। त्यही साल ५ महिना पछाडी आफ्नो दिदी इन्द्रमायाको

पनि देहावसान भयो । फेरि अर्को ५ महिना पछाडि आफ्नो नेम्रो श्रीमतीको कोखबाट छोरीको जन्म भयो ।

२०२२ साल कार्त्तिक कृष्ण त्रयोदशीको दिनमा आफ्नो मनोकामना नेम्रो श्रीमतीको कोखबाट कुल दीपकको जन्म भयो । छोरा जन्मेकोले घरमा सबैजना दंग, खुसी भए । २०२४ सालमा नेपाल मण्डलको स्वयम्भू पचतिर्थमा पूजा भाव गर्नु भयो । दिन बित्दै गईरहेको थियो, छोरा जन्मेको ३ वर्ष पछाडि २०२५ सालमा लगनखेलको घर बनाउने भन्ने सल्लाह आफ्नो श्रीमतीसंग गर्नु भयो र आफूसंग जम्मा ५०००/- पैसा मात्र भएकोले वसुन्धरा देवीसंग मनको इच्छा पूरा होस् भनि वरदान माग्नु भयो । त्यही सालमा सिलु तिर्थमा जानु भयो ।

२०२६ सालमा लगनखेलको घर जग शिलान्यास भयो । त्यही सालमा आफ्नो श्रीमतीको कोखबाट एक जना छोरीको जन्म भयो । जम्मा परिवार ६ जना भयो । २०२६ साल उहाँलाई कालो बादलले छोप्यो । आफ्नो एक मात्र कुलदिपक छोरालाई रोगले सतायो, अनेक उपाय औषधि, वैद्य, द्योमां, सबै आफूले जानेको, बुझेको हरेक उपाय अपनाउदा पनि निको भएन र अन्तमा कम्पाउन्डर समेतलाई देखाउदा पनि निको भएन र अन्तमा पहिलो छोराको मृत्यु माघ महिनामा भयो । घरमा कोलाहल मच्चियो सबैजना दु:खी भए । सधैं दु:खी भएर हुँदैन भन्ने मनमा सोची आफ्नो जजमानी गर्दै जानु भयो ।

२०२८ सालमा छोराको चाहना गर्दै थियो छोरीको जन्म भयो र ५ जना परिवार ६ जनाको परिवार भयो । २०२९ सालमा आफ्नो दोस्रो श्रीमतीको पहिलो एक मात्र छोरीको विवाह भिन्छेबहालको धन भाई बज्राचार्यको

छोरासंग गरिदिनु भयो । छोराको चाहनाले २०३१ सालमा चौथो श्रीमती ल्याउनु भयो, घरमा नल्याइ गुइतोलमा राख्नु भयो र पछी सवै कुरा मिलाइं घरमै ल्याउनु भयो ।

२०३१ सालमा तेस्रो श्रीमतीको कोखवाट छोराको जन्म भयो । सवैजना खुसी भए छोराको आवश्यकतानुसार पालन पोषन गर्दै जानु भयो । फेरि२०३४ सालमा छोरीको जन्म भयो । त्यति वेलासम्म जम्मा परिवार ८ जना भईसकेको थियो । त्यति वेला सन्तान धेरै नवाच्ने, भएकोले परिवार नियोजन गर्ने चलन थिएन । आफ्नो चौथो श्रीमतीको सन्तान एक जना पनि वचेन त्यो श्रीमतीलाई पछि पारपाचुके गर्नुभयो, त्यस वेला कागज गरेर आवश्यक भरण पोषण गरेर पारपाचुके गर्नु भयो ।

२०३५ आश्विन शुक्ल पुर्णमा कुम्भेश्वरको वेखा नारायण खड्गीको चैत्य धर्मधातु वनाएर व्रत वस्ने ईच्छा गर्नुभयो । उहाँले वेखा नारायण खड्गीलाई काम गरिदिने वचन दिनु भयो । यस वेला जातभात छुवाछुतलाई समाजले पचाउदैनथ्यो र त्यस पुण्य कार्यमा आफ्नो साथीहरु त्रैलोक्य राज उपाध्याय वेताज्यू हेरा काजी नभिरज, जोगराज वज्राचार्य हेनावहाल र पुजारी मुल पुरोहित आफू स्वयं भई व्रत सम्पन्न गर्न भयो । त्यस पुजामा श्रद्धालु भक्तजनहरु ४४५ जना थिए । आवश्यक श्रद्धालुहरुलाई भोजनको व्यवस्था इवही, न्हायकंवही धपगावही, कोन्टि वही यी चार वहीलको व्रम्हचर्यहरुले गर्नु भएको थियो । त्यसपछि कति पुणिको दिन अहोरात्र (ओला) पुजामा तन्त्र मुनि व्रम्हचर्यज्यूले पनि त्रिरत्न धःधःया वाजा वजाई हजारौं भक्तजनको साथ नगर परिक्रमा गरी चैत्यहरुमा पुजा गर्‌यो ।

२०३५ सालमा फेरि एक जना पुत्रको जन्म भयो र आवश्यकतानुसार

प्रतिपालन गर्नु भयो । २०३८ साल तिर आफनो दशाले एक दमै माहो विर ामी हुनु भयो । एक हप्तासम्म थला पर्नु भयो र त्यही सालमा मुद्दा मामिलामा पनि पर्नु भयो । २०३९, २०४० सालसम्म मुद्दा लड्नु पर्‍यो । अझै पनि दशाले नछोडे झै २०४० माघ महिनामा कामले ज्वरोले समात्यो । अनेक वैद्य, झारफुक, धोमा हरेक उपाय गरे पनि केही सीप लागेन झनझन रोगले चाप्दै लग्यो । सबैको सल्लाहनुसार कम्पाउण्डर देखाउने निधो गरेर नारायण कम्पाउण्डर वोलाई जाँच गर्नु भयो र भन्नु भयो अस्पताल छिटो लग्नुस् भनेर आफूले नै बोकेर तल ल्याई दिनु भयो र रत्नमान तन्दुकार जजमानले मोटर ल्याई राखी अस्पताल लग्नुभयो । सप्तराज, नेमराज, ज्ञानी आफ्नो छोरी कुरुवा बस्नु भयो यता घरमा आफ्नो श्रीमतीले छोरा पाउनु भएको थियो र श्रीमती पनि आफ्नो पनि (श्रीमान्) अस्पताल लगेकोले चिन्तित हुनुहुन्थ्यो । अस्पतालमा सबै जाँच गरेपछि ढाडमा पानी जमेको ठहर गरेर इन्जेक्सन दिई ढाडको पानी सबै निकालि आवश्यक औषधि दिनु भयो । एक हप्तासम्म अस्पताल बसे पछि त्यहाँबाट घर ल्याउनु भयो । ज्योतिष शास्त्रानुसार तेस्रो छोराको र बुबाको चिन्हामा दोष भएकोले विरामी भएको भन्ने पनि तर्क गरे ।

२०४४ सालमा तेस्रो घर बनाउने निधो गरे र नक्सा पास गरेर घर वनाउन शुरु गरे । सिध्याए पछि घर प्रतिष्ठा गरेर आफन्त सबैलाई भोज खुवाउनु भयो । आफू बसुन्धरा देवीको भक्त भएकोले एक चोटी आफैले श्री ३ बसुन्धरा देवीको व्रत पालो लिने इच्छा थियो । त्यो इच्छा २०४६ सालमा आएर आफूले मुलीको भरमा गएर पालो लिएर आउनु भयो र १ वर्ष पछाडि २०४७ साल भाडव तृतीयाको दिनमा टंगबाहालमा बुन्धरा मण्डल बनाई व्रत बसेर चौठीको दिनमा बहाल घुम्न जानु भयो । त्यस बेला व्रतालुहरु ३०० जना जति हुनुहुन्थ्यो र बहाल बहिलमा आफूले यथासक्य चढाएर

आउने श्रद्धालु भक्तजनहरु ५०० जनाको हाराहारीमा थिए ।

२०४८ सालमा आफै घरमा सर्व संघको सदस्यहरुलाई दिक्षाको आवश्यकता भएकोले चक्र संवर मन्दिरमा दिक्षा दिनु भयो । जम्मा ८, ९ दिनको लामो पूजा पछि दिक्षा सम्पन्न भयो ।

२०५२ चैत्र ९ गते स्वयम्भू हारती पूजा गरेर फर्कदा रातीदेखि त्यही पुरानो काम्ने ज्वरो आयो र ४ दिन पछि निको भयो । २०५३ साल वैशाख महिनामा हिरण्य वर्ण विहारको सान्यक पालो आयो जम्मा ८ जना आजुहरु मध्ये यहाँ थकाली हुनुभयो । त्यही साल माघमा मनमैजूमा चैत्य थापना गर्नु भयो । २०५३ सालमा चक्र वर्ण महाविहारको थपा आजु हुनुभयो । त्यही सालमा इलाननीमा फेरि दिक्षा दिनुभयो र २०५४ सालमा त्यस दिक्षाको वार्षिक उत्सव वज्रवाराहरुमा मनाउन सबै जना जानुभयो । २०५४ सालमा फेरि आफ्नै घर चुकवाहालमा दिक्षा दिनु भयो । जम्मा ५४ जनाले दिक्षा ग्रहण गर्नु भएको थियो । त्यस दिक्षाको वार्षिक उत्सव २०५४ साल जेष्ठ ११ गते शनिवार पुल्चोकको वज्रयोगिणीमा सम्पन्न भयो । यो समेत उहाँले ६ पटकसम्म दिक्षा दिनु भयो । २०५४ आषाढ शुक्लको अष्टमीको दिनमा हिरण्य वर्णको चक्रेश्वर आजु हुनुभयो । २०५४ सालमा माघ महिनामा लुम्बिनी जानु भयो ।

२०५५ सालमा फेरि मनकामना गएर भोलिपल्ट फर्कनु भयो । २०५६ सालमा तमना (दामन) गएर पूजा गर्नु भयो । २०५६ सालमै ताइवानहरुको पूजामा व्यस्त हुनुभयो । २०५६ भदौ महिनामा शिवपुरी व्यारेकमा श्री भैरवको मुर्ति स्थापना गर्नु जानु भयो । २०५६ कार्त्तिकमा उहाँलाई अर्को दु:खले घेर्‍यो । आफ्नो माहिलो छोराको मलेखुमा डुबी मृत्यु भएको खबरले उहाँ

धेरै दुःखी हुनुभयो ।

२०५७ साल श्रावण महिनामा इलाननीको श्री चक्रसंवरको मूर्ति जिर्णोद्वार गर्न उहाँले धेरै मिहेनत गर्नु भयो । जिर्णोद्धार गर्न खाछेंको नेम रत्न शाक्यज्यू, भिमरत्न लगायत सबैले मद्दत गर्नु भयो ।

२०५९ साल माघ शुक्ल द्वितीयाको दिनमा खुवाउनु भएको थियो ।

२०६० सालमा लुम्बिनी गई त्यहाँको गुम्बामा शान्ति स्वस्ति गर्नु भयो । त्यही सालको आषाढ महिनामा काठमाण्डौ विशालनगरको श्रीधर राणाको भरमा गई षट्त्रिंश संवर पूजा विधि गर्नु भयो ।

२०६१ साल जेष्ठमा आफ्नो जन्मदिनको उपलक्ष्यमा आफ्नो कुल घरको चक्रवहालको मन्दिर छत्र राख्नु भयो । २०६३ कार्त्तिक कृष्ण चौठी साँझ ४ बजेतिर आफ्नो श्रीमतीको मृत्यु भयो ।

# कुलपाद जीवनचरित्र

आदीकालमा कुनै एक समय श्री कुलपादाचार्य ललितपुरको न्याखा चोकको वायुव्य कोणमा लपु टोलमा दुई वज्राचार्य स्त्रीसँग विवाह गरि त्यस वेलाका [redacted] राजा भाष्कर देव मन्त्री र भाईभारदाहरुलाई यजमान वनाई उहाँहरुका कुल गुरुका रुपमा अनेक जनलाई तन्त्र, यन्त्र, मन्त्र आर्युवेद र अन्य सिद्ध विधिले उपकार एवं ज्ञान दिँदै सुख पुर्वक वास गर्नु हुन्थ्यो ।

समय वित्दै जाँदा एक रात राजा भाष्कर देवलाई स्वप्नमा श्री भगवान प्रकट हुनु भई पाटनमा मलाई किन लिन आउनु भन्ने आज्ञा हुन्छ । विहान उठी राजा भास्कर देवले सो स्वप्नको सम्वन्धमा वुझ्न आफ्ना भारदारहरुलाई आफ्नो गुरुको आश्रम पुगी स्वप्नको सवै वृतान्त सुनाए पछि श्री गुरु आफूलाई चाहिने पुजाका सारदाम सवै ठीक पारी एक शिलवान चेला भिक्षुलाई साथ लिई शुभ लग्न र शाईतमा दरवार तर्फ प्रस्थान गर्नु हुन्छ । जाँदा जाँदै राजाको स्वप्नमा श्री भगवान् प्रकट हुनु भएको ठाउँमा पुग्नु भएपछि रात्री निशावली भावना गरी, जाग्रत रही विहान स्नान आदि सुद्धि कर्म नित्य जप पाठ पुजा गर्नुभई निराहारणा योग ध्यान समाही परश्रवरणा कलश आदि स्थापना गर्नु भएर पंच शुत्र धागो सहीत वाजाहत सहीत आर्कषण प्रयोग गरि सत सहस्त्र न्यास जाप गर्नु भएपछि श्री भगवानले दर्शन दिनुभयो । सोही समय कार्य सफल भयो भनि हर्ष पूर्वक पुजा समाप्त गरी पंच सुत्र धागो द्वारा आकर्षण मन्त्रको वलले दायाँ हातले बज्र ठाडो उठाई वायाँ हातले पंच सुत्र धागो द्वारा आकर्षण मन्त्रको वलले दायाँ हातले वज्र ठाडो उठाई वायाँ हातले पंचशुत्र धागो लिई एक पद वज्र पद सवं ईष्टानं भंज भंज वाक्य गरि श्री भगवानलाई आकर्षण गरी खिच्दै ल्याउन्

भयो, ल्याउँदा ल्याउँदै शंखमूल पुगे पछि निर्थको विनाटमा सम्म पुग्दा त्यहाँ जम्भुक एकजना पछि पछि लाग्दै थिए यो जम्भुकलाई देख श्री गुरुले हे जम्भुक राज यहाँवाट दक्षिण पाटन राज्य पर्दछ तिमी यहाँवाट फर्केर जानु यो तिम्रो ईलाका पर्दैन भनि आज्ञा भएछ यो वाक्य सुनेर जम्भुक राजले श्री गुरु चरणमा त्यो गुरु म श्री भगवानको सधैं सेवा गर्न वसेको हुँदा वस्पोल संग छुटिने आज्ञा नदीनुस् भन्ने विन्ति गरे। यो कुरा सुने पछि चैलक भिक्षुले हे जम्भुक राज तपाई गुरुको आज्ञा अनुसार अब पछि नलाग्नुस् वरु म वर्षको एक पटक यहाँ आई तपाईलाई सेवा सत्कार गर्न आउँला फर्केर जानुस् भने सो कुरावाट प्रशन्न भई जम्भुक राज श्री गुरुलाई नमस्कार गरेर त्यही सिद्ध हुनु भयो। यद्यपि सो जम्भुव प्रमाण स्वरुप त्यहीं सिद्ध छन्।

पाटन नजिक पुग्न लाग्दा श्री गुरुको आज्ञा अनुसार चैलक भिक्षु राज दरवार गई सो सम्पूर्ण समाचार राजा भाष्कर देवलाई सुनाएपछि राजा अत्यन्त हर्षीत हुनु भई सुनको छत्र र अन्य मंगल निशानीहरु वाजा गाजा साथ श्री भगवान् लिन सिमाना पुगे र सेवा सत्कार गर्दै ल्याउँदा ल्याउँदै पाटनका महालक्ष्मी नजिक एक दक्षिण दीशामा एक स्थान पुग्दा श्री महालक्ष्मी देवी कोप हुनु भई चिल स्वरुपमा श्री गुरुको हातको वज्र खोसेर उड्नु भयो। वज्र हातमा नभएपछि भगवान् अगाडी सर्नु भएन। त्यस पश्चात् श्री गुरुले आफ्नो शस्त्र र मन्त्र वलको प्रभावले सो शकुनी (चिल) को आकाशमा उड्दै गरेको छायाँमा तारण मन्त्रद्वारा आकर्षक प्रयोग गर्नुहुँदा सो चिल जमिनमा वज्रन आई पुगे, गुरुले उसको मुखको बज्रद्वारा उसैलाई प्रहार गर्न खोज्दा महालक्ष्मी देवी शकुनी रुप त्यागी देवि रुपमा प्रकट हुनु भयो। सो देखि गुरुले हे देवि यस्तो शुभकामना किन यसरि बाधा पुर्‍याउनु भएको प्रश्न गर्नुहुँदा हे गुरु कुल पाद मेरो ठाउँमा श्री भगवानलाई ल्याउँदा मलाई एकपटक खबर गर्नुपर्दैन भनि उत्तर दिनुभयो सो उत्तर सुनी श्री गुरुले

देविसँग अपराधको क्षमा याचना गर्नु भयो । जसबाट प्रशन्न भई देवि आफ्नो शक्तिद्वारा सोही स्थानमा एक शिलामा लिन हुनुभयो । अध्यापी मातंगी देवीको नामले सो स्थान प्रसिद्ध छ । श्री भगवान विश्राम गर्नु भएको ठाउँमा नाहला भनि एक चैत्य पनि बनाएको पाईन्छ ।

त्यस पश्चात् पश्चिम संमुख गरि आफ्नो स्थानमा श्री भगवान्लाई दिनमा तीन पटक स्नान गरी नित्य जप तप, पुजा र भेटी दान गरी शक्ति पूर्वक राखि छाडे । दुई चार महिना पछि राजा भाष्कर देवलाई आफूले बनाएको बिहारमा, श्री भगवान प्रतिष्ठा प्ररीष्ण गर्ने ईच्छा भयो र सोही अनुरुप गुरुसँग सल्लाह गर्नुभयो तर, गुरुबाट अनिच्छा प्रकट गर्नुभयो । सो कुरालाई फैसला नहुँदा ललितपुरमा सोबारे छलफल शुरु भयो र सबै खर्च राजाले गरेको हुँदा र राजाको ईच्छाअनुसार सहमति भयो तत् पश्चात् गुरुले श्री भगवानलाई विधि विधान पुर्वक राजाले भनेका स्थानमा स्थापना गरिदिनु भयो । जहाँ राजा पुरा विधि पूर्वक श्री भगवानको सेवा जप तप गर्नु थाले । एक दिन संध्या तर्पण गरि दीप दान गरि सयन हुँला फेरि स्वप्नमा श्री भगवानले दर्शन दिई हे राजन् तिमीले बनाएको बिहारमा म बस्दीन भनि आज्ञा गर्नुभयो । स्वप्नबाट ब्युझिएपछि राजा गुरुको मन नभएको ठाउँमा मैले जर्बजस्ती गरेकोले भगवान्बाट यस्तो आज्ञा भयो पनि पश्चाताप गर्नुभयो । लगातार दिन रात सम्म सोही सपना दोहरिए पछि तेस्रो रातमा राजाले सपनामा श्री भगवान् कहाँ बस्नु हुन्छ भन्ने प्रश्न गर्दा श्री भगवान्बाट मुसाले बिरालोलाई लखट्ने ठाउँमा म बस्छु भन्ने आज्ञा भयो सोही अनुरुप श्री भगवान्लाई आजको क्वावाहाल (Golden Temple) मा प्रतिष्ठा गर्नुभयो यद्यपि श्री भगवान्को पुजा अर्चना चलिनै रहेको छ । क्वावहाल मात्र नभई क्वावहालको पछाडिको बहाल ईनाय-ननी (गणेश भएको वहाल) अपभ्रंश ईलाननीमा चण्डमहारोषण रहेको देवल माथिको आगम र त्यहाँको आजु,

अर्जी (चक्रसंवर, योगिनी) पनि श्री कुलपादाचार्यले स्थापना गर्नुभएको एक किम्वदन्ति अनुसार पुष्टि हुन आउँछ । सो किम्वदन्ति यस प्रकार रहेको पाइन्छ ।

एक समय श्री कुलपाद क्वावहालको श्री भगवानको नित्य आराधना सिध्याई कुनै एक स्थान (हालको चाकुपाट) मा श्री हेरुक चक्रसंम्वरको समाधिमा र हनुभएको वेला पहिले चक्र आकाशवाट झरेको हुँदा सो स्थानको नाम चक्रपत हाल अपभ्रंस भई चाकुपात रहन गयो र सोही चक्र श्री गुरुले धारण गरि समाधि वस्दा पछि श्री चक्रसंम्वर साक्षत दर्शन हुन गयो र सोही दर्शन अनुरुप गर्भमा सो चक्र राखि आगम मुर्ति स्थापना गर्नु भयो हाल पनि सो सात फुटको मुर्ति आगममा विद्यमान छ। वि.सं. २०५८ सालमा उहाँको सन्तति पण्डित गुरु रत्न राज वज्राचार्य चक्रेश्वर आउनुहुँदा दाता नेम रत्न शाक्य तर्फवाट जिर्णोउद्वार भएको पाईन्छ ।

# श्री आरर्य नामसंगीति स्तोत्र
# ॐ नमो रत्नत्रयाय

**ॐ बोधिप्रविधि: बोधिप्रस्थान बोधिपरिणाममना:**

आकाश धातुपर्यन्ते स्थितायं सर्वप्राणिन: ।
ते उत्तम नाथपदं प्राप्नुर्वान्त्विति चिन्तयन् ॥
तेषामेव च अर्थेन शुद्ध चर्या करोम्यहम् ॥

ये देवा: सन्तिमेरो वरकनकमले मण्डले ये च यक्षा: ।
पाताले येभुजंगा स्फणिमणिकिरणैर्ध्वस्त सर्वान्धकारा: ॥
कैलाशे स्त्रीविलासे प्रमुदित हृदया: ये च विद्याधराद्या: ।
तेमोक्ष द्वारभुतं मुनिवरवचनं श्रोतुमायान्ति सर्वे ॥२॥
आयान्ता श्रोतुकामा: असुरसुरनरा: सिद्ध गन्धर्वनागा: ।
कुम्भाण्डा: किन्नरेन्द्रा गरुडहरिहरा शक्रब्रह्मादि देवा: ॥
पूजा पंचोपचारै: स्त्रिभुवनर्नामतं मेदिनी दुर्लभं यत् ।
भक्त्याहं वाचयामि प्रणमितशिरसा तंमहायानसूत्र ॥

॥१॥२

# नामसङ्गीति प्रारम्भ
# ॐ नमो महामञ्जुनाथाय

अथवज्र धरः श्रीमान् दुर्दान्त दमकः परः ॥
त्रैलोक्य विजयी वीरो गुह्यचराट् कुलिशेश्वरः ॥१॥
विवुद्ध पुण्डरीकाक्षः प्रफुल्ल कमलाननः ॥
प्रोल्लालयद्वज्रवरः स्वकरेण मुहुर्मुहुः ॥२॥
भृकुटीतरंग प्रमुखै रनंतैवंज्र पाणिभिः ॥
दुर्दान्त दमकैर्वीरैः वीर वीभत्स रुपिभिः ॥३॥
उल्लालयद् भिः स्वकरैः प्रस्फुरद्वज्रकोटिभिः ॥
प्रज्ञोपाय महाकरुणा जगदर्थ करैः परैः ॥४॥
हृष्टतुष्टा सयर्मुदितैः क्रोधविग्रह रुपिभिः ॥
वुद्धकृत्य करैर्नाथैः सार्द्धप्रणत विग्रहै ॥५॥
प्रणम्य नाथसंवुध्द भगवन्तं तथागतम् ॥
कृताञ्जलि पुटोभूत्वा इदमाह स्थितोऽग्रतः ॥६॥
मध्दिताय ममार्थाय अनुकम्पाय मे विभो ॥
मायाजालाभिसंवोधि यंथालाभी भंवाम्यहम् ॥७॥

अज्ञान पङ्कमग्नानां क्लेशव्याकुल चेतसाम् ॥
हिताय सर्वसत्वाना मनुत्तर फलाप्तये ॥८॥
प्रकाशयतु संवुध्दो भगवान् सास्ता जगद्गुरु ॥
महासमय तत्वज्ञ इन्द्रियाशय वित्परः ॥९॥
भगवन् ज्ञानकायस्य महोष्णीषस्य गीष्पतेः ॥
मञ्जुश्री ज्ञानसत्वस्य ज्ञानमूर्ते स्वयम्भुवः ॥१०॥
गम्भीरार्थां मुदारार्थं महार्थांमसमां शिवाम् ॥

आदिमध्यान्त कल्याणी नामसंगीति मुत्तमाम ॥११॥
यातीतै र्भाषिता बुध्दैः र्भाषिष्यन्ते ह्यनागताः ॥
प्रत्युत्पन्नैश्च संबुद्धा या भाषन्ते पुनः पुनः ॥१२॥
मायाजाल महातन्त्रे या चास्मिन् संप्रगीयते ॥
महावज्रधरै र्हृष्टै रमेयैर्मन्त्र धारिभिः ॥१३॥
अहं चैनां धारयिष्यामि निर्याणं च दृढाशयः ॥
यथा भवाम्यहं नाथ सर्वसंवुद्ध गुह्यधृक ॥१४॥
प्रकाशयिष्ये सत्वानां यथाशय विशेषतः ॥
अशेष क्लेशनाशाय अशेषज्ञानहानये ॥१५॥
एवं मध्येष्य गुहेन्द्रो वज्रपाणि स्तथागतम् ॥
कृताञ्जलि पुटोभूत्वा प्रह्वकायःस्थितोऽग्रतः ॥१६॥

**अध्येषणा ज्ञानगाथा षोदशः**

अथ शाक्यमुनिर्भगवान् संबुद्धो द्विपदोत्तमः
निर्णमय्यायतास्फीतां स्वजिह्वां स्वमुखाच्छुभाम् ॥१॥
स्मितं संदर्श्य लोकनामपाय त्रय शोधनम् ॥
त्रैलोक्याभासकरणं चतुर्मारारि शासनम् ॥२॥
त्रैलोक्यमापूरयन्त्यां ब्राम्ह मधुर यागिरा ॥
प्रत्यभाषत् गुहयेन्द्रो वज्रपाणि र्महाबलः ॥३॥
साधु बज्रधर श्रीमान् साधु ते बज्रपानयः ॥
यस्त्वं जगद्धितार्थाय महाकरुणयान्वितः ॥४॥
महार्था नामसंगीति पवित्रमघनाशिनीम् ॥
मञ्जुश्री ज्ञानकायस्य मन्त्रश्रोतुं समुद्यतः ॥५॥
तत्साधु देशयाम्येष अहं ते गुह्यकाधिपः ॥
श्रृणुत्वमेकाग्रमना तत्साधु भगवन्निति ॥६॥

## प्रतिबचन ज्ञानगाथा षट

अथ शाक्यमुनि भंगवान् सकल मन्त्र कुलंमहत् ॥
मन्त्र विद्या धरकुलं व्यवलोक्य कुलत्रयम् ॥१॥
लोकालोकोत्तरंकुलं लोकालोककुलं महत् ॥
महामुद्रा कुलंचाग्य् महोष्णीष कुलं महत् ॥२॥

## षट्कुलावलोकन ज्ञानगाथा द्वे

इमां षण्मन्त्रराजानं संयुक्तामद्वयोद्वयाम् ॥
अनुत्पाद धर्मिणीगाथां भाषन्तेस्म गिरांपतेः ॥१॥
अआ इई उऊ एऐ ओ औ अंअः स्थितोहृदि ॥
ज्ञानमूर्तिरहं वुद्धो वुद्धाना त्रय्ध्ववर्तिनाम् ॥२॥
ॐ वज्रतीक्ष्ण दुःखच्छेद प्रज्ञाज्ञान मूर्तये ॥
ज्ञानकाय वागीश्वर अरपचनाय ते नमः ॥३॥

## मायाजाला भिसंबोधिक्रम गाथा तिस्त्रः

तद्यथा भगवान् वुद्धः संवुद्धोऽकारसम्भवः ॥
अकारः सर्ववर्णाग्र्यो महार्थः परमाक्षर ॥१॥
महाप्राणो ह्यनुत्पादो वागुदाहारवर्जितः ॥
सर्वाः भिलाप हेत्वग्र्यः सर्ववाक्सु प्रभास्वर ॥२॥
महामह महारागः सर्वसत्व रतिकरः ॥
महामह महाद्वेषः सर्वक्लेश महारिपु ॥३॥
महामह महामोहो मूढधीमोहषूदनः ॥
महामह महाक्रोधो महाक्रोध रिपुर्महान् ॥४॥
महामह महालोभ सर्वलोभ निषूदनः ॥
महाकामो महासौख्योः महामोद महारति ॥५॥

महारुपा महाकाया महावणा महावपु ॥
महानाम महोदारो महाविपुल मण्डल ॥६॥
महाप्रज्ञा युधधरो महाक्लेशांकुशोऽग्रणी ॥
महायशा महाकीर्ति महाज्योति मंहाद्युति, ॥७॥
महामायाधरो विद्वान् महामाया-र्थसाधकः ॥
महामाया रतिरतो महामायेन्द्र जालिकः ॥८॥
महादानपति श्रेष्ठो महाशील धरोऽग्रणी ॥
महाक्षान्तिधरो धीरो महावीर्य पराक्रमः ॥९॥
महाध्यान समाधिस्थो महाप्रज्ञा शरीरधृक ॥
महावलो महोपायः प्रणिधि ज्ञानसागरः ॥१०॥
महामैत्री मयो मेयो महाकारुणिको ग्रधीः ॥
महाप्रज्ञा महाधीमान् महोपायो महाकृतीः ॥११॥
महाऋद्धि वलोपेतो महावेगो महाजवः ॥
महर्द्धिको महेशाख्यो महावल पराक्रम ॥१२॥
महाभवाद्रिसंभेत्ता महावज्रधरो धनः ॥
महाक्रूरो महारौद्रो महाभय भयंकरः ॥१३॥
माविद्योत्तमो नाथो महामन्त्रोत्तमो गुरुः ॥
महायान नयारुढो महायान नयोत्तमः ॥१४॥

**बज्रधातु मण्डल ज्ञानगाथा चतुर्दशः**

महावैरोचनो वुद्धो महामौनी महामुनिः ॥
महामन्त्रनयोद्भूतो महामन्त्रनयात्मकः ॥१॥
दशपारमिता प्राप्तो दशपारमिताश्रयः ॥
दशपारमिताशुद्धि दंशपारमितानयः ॥२॥
दशभूमीश्वरो नाथो दशभूमि प्रतिष्ठतः ॥

दशज्ञान विशुद्धात्मा दशज्ञान विशुद्धधृक् ॥३॥
दशाकारो दशार्थार्थो मुनीन्द्रो दशवलो विभु: ॥
अशेष विश्वार्थकरो दशाकारवशी महान् ॥४॥
अनादि निष्प्रपञ्चात्मा शुद्धात्मा तथतात्मक: ॥
भूतबादी यथाबादि तथाकारी अनन्यवाक् ॥५॥
अद्वयोऽद्वयवादी च भूतकोटि व्यवस्थित: ॥
नैरात्म्य सिंहनिर्नादी कुतीर्थ मृग भीकर: ॥६॥
सर्वत्रगोऽमोघगति स्तथागत मनोजव: ॥
जिनो जितारी विंजयी चक्रवर्ती महाबल ॥७॥
गणमुख्यो गणाचाय्र्यो गणेशो गणपतिर्बशी ॥
महानुभावो धौरेयोऽनन्यनेयो महा नय: ॥८॥
वागीशो वाक्यपतिर्वाग्मी वाचस्पति रनन्तगी: ॥
सत्यबाक्सत्यवादी च चतु: सत्योपदेशक: ॥९॥
अवैवर्तिको हयनागामी खड्ग: प्रत्येक नायक: ॥
नानानिर्याण निर्यातो महाभूतैक कारण: ॥१०॥
अर्हत्क्षीणस्रवो भिक्षु वीतरागो जितेन्द्रिय:
क्षमप्राप्तोऽभयप्राप्त: शीतीभूतो हयनाविल: ॥११॥
विद्याचरणसम्पन्न: सुगतो लोकवित्पर: ॥
निर्ममोनिरहंकार: सत्यद्वय नयस्थित: ॥१२॥
संसार पारकोटिस्थ: कृतकृत्य: स्थलस्थित: ॥
कैवल्य ज्ञाननिष्ठुत: प्रज्ञाशस्त्रो विदारण ॥१३॥
सद्धर्मो धर्मराद्भास्वान् लोकालोक: कर: पर ॥
धर्मेश्वरो धर्मराज श्रेयोमार्गोपदेशक: ॥१४॥
सिद्धार्थ: सिद्धसंकल्प सर्वसंकल्प वर्जित ॥
निर्विकल्पाक्षयोधातु: धर्मधातु: परोऽव्यय ॥१५॥

पुण्यवान् पुण्यसंभारो ज्ञान ज्ञानान्तरं महत् ॥
ज्ञानवान् सदसज्ज्ञानी संभारद्वय संभृत: ॥१६॥
शाश्वतो विश्वराद्योगी ध्यानंध्येयो धियार्पन: ॥
प्रत्यात्मवेद्योहचचल: परमाद्य स्त्रिकायधृक् ॥१७॥
पञ्चकायात्मको वुद्ध: पञ्चज्ञानात्मको विभु: ॥
पञ्चवुद्धात्ममकुट: पञ्चचक्षु रसंगधृक् ॥१८॥
जनक: सर्ववुद्धानां वुद्धपुत्र: परो वर: ॥
प्रज्ञाभवोद्भवोद्योनि धर्मयोनि र्भवान्तकृत् ॥१९॥
घनैकसारो वज्रात्मा सद्योजातो जगत्पति: ॥
गगनोद्भव: स्वयम्भू: प्रज्ञाज्ञाननलो महान् ॥२०॥
वैरोचनो महादीप्ति र्ज्ञानज्योति विरोचन: ॥
जगत्प्रदीपो: ज्ञानोल्का महातेजा प्रभास्वर: ॥२१॥
विद्याराजोऽग्रमन्त्रेशो मन्त्रराजो महार्थकृत् ॥
महोष्नीषोद्भुतोष्नीषो विश्वदर्शी वियत्पति: ॥२२॥
सर्व वुद्धात्म भावाग्र्यो जगदानन्द लोचन: ॥
विश्वरुपो विधाता च पूज्योमान्यो महाऋषि: ॥२३॥
कुलत्रय धरोमन्त्री महासमय मन्त्रधृक् ॥
रत्नत्रयधर: श्रेष्ठ स्त्रियानोत्तम देशक: ॥२४॥
अमोघपाशो विजयी वज्रपाशो महाग्रह: ॥
वज्रांकुशो महापाशो वज्रभैरव भीकर: ॥२५॥

## शुविशुद्धधर्मधातु ज्ञानगाथा पादोन पञ्चविंशति:

क्रोधराट् षण्मुखो भीम: षट्नेत्र: षड्भुजो वली: ॥
द्रंष्ट्राकराल: कंकालो हलाहल: शतानन: ॥१॥
यमान्तको विघ्नराजो वज्रवेगो भयंकर ॥

विद्युष्टवज्रो म्हवज्रो मायाबज्रो महोदर ॥२॥
कुलिशेशो बज्रयोनि र्बज्रमण्डो नभोपमः ॥
अचलैक जटाटोपो गजचर्म्म पटार्द्रधृक ॥३॥
हाहाकारो महाघोरो हीहीकारो भयानकः ॥
अट्टहासो महाहासो वज्रहासो महारवः ॥४॥
वज्रसत्वो महासत्वो वजराजो महासुख ॥
वज्रचण्डो महामोदो वज्रहूँकार हूँकृतिः ॥५॥
वज्रवाणायुध धरो वज्रखड्गो निकृन्तनः ॥
विश्ववज्रधरो वज्री एकवज्री रणञ्जहः ॥६॥
वज्रज्वाला करालाक्षो वज्रज्वाला शिरोरुहः ॥
वज्रवेशो महावेशः शताक्षो वज्रलोचन ॥७॥
वज्ररोमां कुरतनु र्वज्रलोमैक विग्रह ॥
वज्रकोटि नखाम्भो वज्रसार घनच्छविः ॥८॥
वज्रमालाधर श्रीमान् वज्राभरण भूषितः ॥
हाहाट्टहासो निर्घोषो वज्रघोषः षडक्षरः ॥९॥
मंजुघोषो महानाद स्त्रैलोक्यैक रवो महान् ॥
आकाश धातु पर्यन्त घोषाघोषवताम्वरः ॥१०॥

**आदर्शना ज्ञानगाथा पादोनसार्द्ध दशः**

तथता भूतनैरात्म्यो भूतकोटि रणक्षरः ॥
शून्यतावादि वृषभो गम्भीरोदार गर्जनः ॥१॥
धर्मशंखो महाशब्दो धर्मगण्डी महारणः ॥
अप्रतिष्ठित निर्वाणो दशदिग्धर्मदुन्दुभिः ॥२॥
अरुपो रुपवानाग्र्यो नानारुपो मनोमयः ॥
सर्वरुपावभास श्री रशेज प्रतिविम्बधृक ॥३॥

अप्रधृष्यो महेशाख्य स्त्रैधातुक महेश्वर: ॥
समुच्छ्रितायर्य मार्गस्थो धर्मकेतु र्महोदय: ॥४॥
त्रैलोक्यैक कुमारांग स्थविरो वृद्ध प्रजापति: ॥
द्वात्रिंशल्लक्षण धर: कान्तस्त्रैलोक्य सुन्दर: ॥५॥
लोकज्ञान गुणाचार्यो लोकाचार्यो विशारद: ॥
नाथस्त्राता त्रिलोकान्त: शरणंता निरुन्तर ॥६॥
गगनाभोग संभोग: सर्वज्ञ ज्ञानसागर: ॥
अविद्याण्डकोशभेत्ता भवपंजर दारण: ॥७॥
शमिताशेष संक्लेश: संसारार्णव पारग: ॥
ज्ञानाभिषेक मुकुट: संम्यक्संवुद्ध भूषण: ॥८॥
त्रिदु:ख दु:खशमन स्त्र्यन्तोऽन्त स्त्रिमुक्तिग: ॥
सर्वावरण निर्मुक्त: आकाश समतांगत ॥९॥
सर्वक्लेश मलातीत स्त्रीध्वानध्व गतिंगत ॥
सर्वसत्व महानागो गुणशेखर्विशेखर: ॥१०॥
सर्वोपधि विनिर्मुक्ता: व्योमवर्त्मनि सुस्थित: ॥
महाचिन्तामणि धर सर्वरत्नोत्तमो विभु: ॥११॥
महाकल्प तरु:स्फीतो महाभद्र घटोत्तम: ॥
सर्वसत्वार्थ कृत्कर्ता हितैषी सत्ववत्सल: ॥१२॥
शुभाशुभज्ञ: कालज्ञ: समयज्ञ: समयी विभु: ॥
सत्वेन्द्रियज्ञो वेलज्ञो विमुक्ति त्रयकोविद: ॥१३॥
गुणी गुणज्ञो धर्मज्ञ: प्रशस्तो मंगलोदय: ॥
सर्व मंगल मांगल्य: कीर्तिलक्ष्मी यंश: शुभ: ॥१४॥
महोत्सवो महोश्वासो महानन्दो महारति: ॥
सत्कार सत्कृतिर्भूति प्रमोद: श्री यशस्पति: ॥१५॥
वरण्यो वरद: श्रेष्ट: शरण्य: शरणोत्तम: ॥

महा भयारि: प्रवरो नि:शेष भयनाशन: ॥१६॥
शिखीशिखण्डी जटिलो जटीमौन्डी किरीटिमान् ॥
पञ्चानन: पञ्चशिख: पञ्चचीकर शेखर: ॥१७॥
महावृत धरामौञ्जी बृम्हचारी ब्रतोत्तम: ॥
महातपा: तपोनिष्ठ: स्नातको गौतमोऽग्रणी ॥१८॥
बम्हविद् ब्राम्हणो बम्हा बृम्हनिर्वाण माप्तवान् ॥
मुक्तिर्मोक्षो विमोक्षांगो विमुक्ति: शान्तता शिव ॥१९॥
निर्वाण निर्वृति: शान्ति: श्रेयोनिर्याण मन्तग: ॥
सुखदु:खान्त कृन्निष्ठा वैराग्यमुपधिक्षय: ॥२०॥
अजयोऽनुपमोऽव्यक्तो निराभासो निरंजन: ॥
निष्कल: सर्वगो व्यापी सूक्ष्मोवीजमनास्रव: ॥२१॥
अरजो विरजो विमलो वान्तदोषी निरामय: ॥
सुप्रवुद्धो विवुद्धात्मा सर्वज्ञ: सर्ववित्पर: ॥२२॥
विज्ञान धर्मतातीतो ज्ञानमद्वय रुपधृक् ॥
निर्विकल्पो निराभोग स्त्र्यध्वसंवुद्ध कार्य्यकृत ॥२३॥
अनादि निधनो वुद्ध आदीवुध्दो निरन्वय ॥
ज्ञानैकचक्षु रमलो ज्ञानमूर्ति स्थतागत ॥२४॥
वागीश्वर महावादी वादिरांट् वादीपुंगव: ॥
वदतांवरो वरिष्ठो वादिसिहो पराजित ॥२५॥
समन्तदर्शी त्रामोद्य स्तेजोमाली सुदर्शनं ॥
श्रीवत्स, सुप्रभो दीप्ति र्भाभासुर करद्ययुत्ति: ॥२६॥
महाभिषग्वर श्रेष्ठ: सल्यहर्ता निरुत्तर: ॥
अशेष भैषज्यतरु: क्लेशव्याधि महारिपु: ॥२७॥
त्रैलोक्य तिलक: कान्त: श्रीमान्नक्षत्र मण्डल: ॥
दशदिग्व्योम पर्यन्तो धर्नध्वज महोच्छ्रय ॥२८॥

जगच्छत्रैक विपुलो मैत्री करुण मण्डल: ॥
पद्मनृत्तेश्वर: श्रीमान् रत्नछत्रो महाविभ: ॥२९॥
सर्ववुध्द महाराज: सर्ववुध्दात्मभावधृक: ॥
सर्ववुद्ध महायोग सर्ववुद्धैक शासन: ॥३०॥
वज्रत्नाभिषेक श्री: सर्वरत्नाधिपेश्वर ॥
सर्वलोकेश्वर पति: सर्व वज्रधराधिप: ॥३१॥
सर्ववुद्ध महाचित्त: सर्ववुद्ध मनोगत्ति ॥
सर्ववुद्ध महाकाय: सर्ववुद्ध सरस्वती: ॥३२॥
वज्रसूर्य्य महालोको वज्रेन्दु विमलप्रभ: ॥
विरागादि महारागो विश्ववर्णोज्ज्वलप्रभ: ॥३३॥
संवुद्ध वज्रपर्यङ्को वुद्धसंगीति धर्म धृक् ॥
वुद्धपद्मोद्भव श्रीमान सर्वज्ञ ज्ञानकोश धृक् ॥३४॥
विश्वमायाधरो राजा वुद्धविद्याधरो महान् ॥
वज्रतीक्ष्णो महाखड्गो विशुद्ध: परमाक्षर: ॥३५॥
दु:खच्छेद महायान वज्रधर्म महायुध: ॥
जिनजिग्वज्रगाम्भीर्यो वज्रवुद्धि र्यथार्थवित् ॥३६॥
सर्वपारमिता पूरी सर्वभूमि विभूषण ॥
विशुद्धधर्म नैरात्म्य सम्यग्ज्ञानेन्दुहृत्प्रभ: ॥३७॥
मायाजाल महोद्योग सर्वतन्त्राधिप: पर: ॥
अशेष वज्रपर्यङ्को नि:शेष ज्ञानकायधृक् ॥३८॥
समन्तभद्र: सुमति: क्षितिगर्भो जगद् धृति: ॥
सर्ववुद्ध महागर्भो विश्वनिर्माण चक्रधृक् ॥३९॥
सर्वभाव स्वभावाग्य: सर्वभाव स्वभावधृक् ॥
अनुत्पाद धर्म विश्वार्थ, सर्वधर्म स्वभावधृक् ॥४०॥
एकक्षण महाप्राज्ञ: सर्वधर्मावबोध धृक् ॥

सर्व धर्माभिसमयो भूतान्त मुनिरग्रधीः ॥४१॥
स्तिमितः सुप्रसन्नात्मा सम्यकसंवुद्ध वोधिधृक् ॥
प्रत्यक्ष सर्ववुध्दानां ज्ञानार्चिः सुप्रभास्वरः ॥४२॥

## प्रत्यवेक्षाणा ज्ञानगाथा द्वाचत्वारिंशत्

इष्टार्थ साधकः परः सर्वापाय विशोधकः ॥
सर्वसत्वोत्तमो नाथः सर्वसत्व प्रमोचक ॥१॥
क्लेशसंग्राम शूरैक अज्ञान रिपुदर्पहा ॥
धीः श्रृंगार धरः श्रीमान् वीर वीभत्स रुपधृक् ॥२॥
वाहुदण्ड शताक्षेप पद निक्षेप नर्तनः ॥
श्रीमच्छत भुजाभोग गगनाभोग नर्तन ॥३॥
एकपाद तलाक्रान्त महीमण्डल तलेस्थितः ॥
व्रम्हाण्ड शिखराक्रान्त पादाङ्गुष्ठ नखेस्थित ॥४॥
एकार्थोऽद्वय धर्मार्थः परमार्थो विनश्वरः ॥
नानाविज्ञप्ति रुपार्थ श्चितविज्ञान सन्ततिः ॥५॥
अशेष भावार्थ रतिः शून्यता रतिरग्रधीः ॥
भवरागाद्यतीतश्च भवत्रय महारतिः ॥६॥
शुध्दशुभ्राभ्रधवल शरच्चन्द्रांशु सुप्रभः ॥
वालार्क मण्डलच्छायो महाराग नखप्रभ ॥७॥
इन्द्रनीलाग्र सच्चीरो महानील कायाग्रधृक् ॥
महामणि मयूखश्री वुध्द निर्माण भूषणः ॥८॥
लोकधातु शताकम्पी ऋध्दिपाद महाक्रमः ॥
महास्मृति धरस्तत्व श्चतुस्मृति समाधिराट् ॥९॥
वोध्यङ्ग कुसुमामोद स्तथागत गुणेदधिः ॥
अष्टाङ्गमार्ग नयवित्सम्यक्संवुद्धमार्गवित् ॥१०॥

सर्वसत्व महासंगो निसंगो गगनोपम: ॥
सर्वसत्व मनोजात सर्वसत्व मनोजव: ॥११॥
सर्वसत्वेन्द्रियार्थज्ञ: सर्वसत्व मनोहर: ॥
पञ्चस्कन्धार्थ तत्वज्ञ: पञ्चस्कन्ध विशुध्दधृक् ॥१२॥
सर्वनिर्याण कोटिस्थ सर्वनिर्याण कोविद ॥
सर्वनिर्याण मार्गस्थ: सर्वनिर्याण देशक: ॥१३॥
द्वादशांग भवोत्खातो द्वादशाकार शुध्दधृक् ॥
चतु: सत्य नयाकार अष्ठज्ञानाववोध धृक् ॥१४॥
द्वादशाकार सत्यर्थ: षोडशाकार तत्ववित् ॥
विंशत्याकार संवोधि विंवुध्द सर्ववित्पर: ॥१५॥
अमेय वुध्दनिर्माण कायकोटि विभावक: ॥
सर्वक्षणाभिसमय सर्वचित्त क्षणार्थवत् ॥१६॥
नानायान नयोपाय जगदर्थ विभावक: ॥
यानत्रितयनिर्यात एकयानफलेस्थित: ॥१७॥
क्लेशधातु विशुद्धात्मा कर्मधातु क्षयंकर: ॥
ओद्योदधि समुत्तीर्णो योगकान्तार विश्चित: ॥१८॥
क्लेशोपक्लेश संक्लेश सुप्रहीन सवासन: ॥
प्रज्ञोपाय महाकरुणा अमोघ जगदर्थकृत् ॥१९॥
सर्वसंज्ञा प्रहीणार्थो विज्ञानर्थो निरोधधृक् ॥
सर्वसत्व मनोविषय: सर्ववुध्द मनोगती: ॥२०॥
सर्वसत्व मनोतस्थ स्तच्चित समतांगत: ॥
सर्वसत्व मनोल्हादी सर्वसत्व मनोरति: ॥२१॥
सिध्दान्त विभ्रमोपगत: सर्वभ्रान्ति विवर्जित: ॥
नि:संदिग्ध मतिस्त्रर्थ: सर्वार्थस्त्रिगुणात्मक: ॥२२॥
पञ्चस्कन्धार्थत्रिष्काल: सर्वक्षण विभावक: ॥

एकक्षण भिसंबुध्द: सर्वबुध्द स्वभाव धृक् ॥२३॥
अनङ्गकाय: कायग्य्: कायाकोटि विभावक: ॥
अशेष रुपसंदर्शी रत्नकेतु महामणि: ॥२४॥

## समता ज्ञानगाथा चतुर्विंशति:

सर्वसंवुद्ध वोध्दोव्यो वुद्धवोधि रनुत्तर: ॥
अनक्षरो मन्त्रयोनि र्महामन्त्र कुलत्रय: ॥१॥
सर्वमन्त्रार्थ जनको महाविन्दु रनक्षर: ॥
पञ्चाक्षरो महाशून्यो विन्दुशून्य, षडाक्षर: ॥२॥
सर्वाकार निराकार: षोडशाद्धार्ध्द विन्दुधृक् ॥
अकल: कलनातीत श्चतुर्थ ध्यानकोटि धृक् ॥३॥
सर्वध्यान कलाभिज्ञ समाधि कुलगोत्र धृक् ॥
समाधिकाय कागाग्य्: सर्वसंभोग कायराट् ॥४॥
निर्माणकाय कागाग्यो वुद्धनिर्माण वंशधृक् ॥
दशदिग्विश्वनिर्माणो यथावज्जगदर्थकृत् ॥५॥
देवातिदेवो देवेन्द्रो सुरेन्द्रो दानावाधिप: ॥
अमरेन्द्र: सुरगुरु: प्रमथ: प्रमथेश्वर ॥६॥
उत्तीर्ण भवकान्तार एक:शास्ता जगद्गुरु ॥
प्रख्यात दशदिग्लोको धर्मदानपति र्महान् ॥७॥
मैत्रिसन्नाह सन्नद्ध करुणवर्म वर्मित: ॥
प्रज्ञाखड्ग धनुर्वाण: क्लेशाज्ञान रणञ्जह: ॥८॥
मारारि र्मारजिद्वीर श्चतुर्मार भयान्तकृत् ॥
सर्वमार चमूजंता संवुद्धो लोकनायक: ॥९॥
वन्द्य पूज्योभिवाद्यञ्च माननीय श्चनित्यश ॥
अर्चनीयेत्तमो मान्यो नमस्ते:परमो गुरु ॥१०॥



त्रैलोक्यक क्रमगति व्योमापर्यन्त विक्रमः ॥
त्रैविद्यः श्रोत्रियः पुतः षडभिज्ञः षडनुस्मृति, ॥११॥
वोधिसत्वो महासत्वो लोकातीतो मर्हार्द्धक, ॥
प्रज्ञापारमिता निष्ठः प्रज्ञातत्वस्त्व मागत ॥१२॥
आत्मवित्परवित्सर्वः सर्वयोज्योग्रपुद्गलः ॥
सर्वोपमा मतिक्रान्तो ज्ञेयोज्ञानाधिपः परः ॥१३॥
धर्मदानपतिः श्रेष्ट श्चतुर्मुद्रार्थ देशकः ॥
पर्युपास्वतमो जगतां निर्याणत्रय यायिनाम् ॥१४॥
परमार्थ विशुध्द श्री स्त्रैलोक्य सुभगो महान् ॥
सर्व संपत्करःश्रीमान मञ्जुश्री श्रीमताम्वरः ॥१५॥

## कृत्यानुष्ठान ज्ञानगाथा पञ्चदशः

नमस्ते वरद वज्राग्य् भूतकोटि नमोऽस्तुते ॥
नमस्ते शून्यतागर्भ वुध्द वोधि नमोस्तुते ॥१॥
वुध्दराग नमस्तेऽतु वुध्दकाय नमो नमः ॥
वुध्दप्रीति नमस्तुभ्यं वुध्दमोद नमो नमः ॥२॥
वुध्दस्मित नमस्तुभ्यं वुद्धहास नमो नमः ॥
वुध्दवाच नमस्तुभ्यं वुध्दभाव नमो नमः ॥३॥
अभवोद्भव नमस्तुभ्यं नमस्ते वुध्दसंभव ॥
गगनोद्भ नमस्तुभ्यं नमस्ते ज्ञानसंभव ॥४॥
मायाजाल नमस्तुभ्यं नमस्ते बुध्दनाटक ॥
नमस्ते सर्वसर्वेभ्यो ज्ञानकाय नमोऽस्तुते ॥५॥

## इति पञ्चथागत ज्ञानगाथा स्तुति पञ्च

ॐ सर्वधर्माभाव स्वभाव विशुध्द वज्र अआ अंअः

प्रकृती परिशुध्दाः सर्वधर्मा यदुत सर्वतथागत
ज्ञानकाय मञ्जुश्री परिशुध्दिता मुपादायेति ॥
अआः ओम् सर्वतथागत ह्लदय हरहर ओम् हूं ह्रींः
भगवन् ज्ञानमूर्ति वागीश्वर महावाच सर्वधर्मा
गगनामल सुपरिशुध्द धर्मधातु ज्ञानगर्भ आः ॥

**॥ इति मन्त्रविन्यासः ॥**

अथ वज्रधरः श्रीमान् ह्ष्टतुष्ट कृताञ्जलिः ॥
प्रणम्य नाथ संवुद्धं भगवन्त तथागतम् ॥१॥
अन्यैश्च वहुविधैर्नाथै गुंह्येद्रो वज्रपाणिभिः ॥
ससार्द्ध क्रोधराजान्यैः प्रोवाचोच्चै रिदं वचः ॥२॥
अनुमोदा महेनाथ साधु साधु सुभाषितः ॥
कृतोस्माकं महानार्थः सम्यकसंःवोधि प्रापकः ॥३॥
जगतश्चाप्यनाथस्य विमुक्ति फलकांक्षिणः ॥
श्रेयोमार्गो विशुद्धोऽयं मायाजाल नयोदितः ॥४॥
गम्भीरोदार वैपुल्यो महार्थो जगदर्थ कृत् ॥
वुद्धानां विषयोह्मेसः सम्यक्संवुद्ध भाषितः ॥५॥

**इति उपसंहार गाथा पंच**

आर्य मायाजाल षोडशसाहस्रिकात् महायोग
तन्त्रान्तःपाति समाधिजाल पटलात् भगवन्तथागत
श्रीशाक्यमुनिना भाषिता भगवतो
मञ्जुश्री ज्ञानसत्वस्य परामर्श नामसङ्गीति परिसमाप्ता ॥ ॥शुभम् ॥
ये धर्मा हेतुप्रभवा हेतुस्तेषां तथागतः ।
ह्यवदत्तेषाञ्च यो निरोध एवंवादी महाश्रमणः ॥

## त्रिरत्नया शरण

यांसौ धर्मं सुगतं गदितं पठ्यन भक्ति भावान्मात्रहीन कथमपि
पदं पात गाथा क्षरंवा ॥ जिह्वा दोषैः पवन चांग्नैः श्लेष्मदोष
प्रचारैर्यूयं बुद्धाः स्वभवनगता बोधिमन्त्राः क्षमध्वं ॥ ॥
अनेन पुण्येन च दोषहीनं निर्व्याममिपंवमसुखोदयं, च नमांम्न् बुद्धाय
अनन्तगोचराय, नमोस्तुते सत्यप्रकामुने ॥ सत्यप्रतिष्ठाय
प्रज्ञाचमोक्षसे, सर्वेचकामाः सफला भवन्तु ॥
मनोवांछासर्वसिद्धिरस्तु

## दुर्गति परिशोधन धारणी

ॐ नमो भगवते सर्वदूर्गति परिशोधनराजाय तथागता याऽर्हते
सम्यक्सवुद्धाय तद्यथा ओम् शोधने शोधने विशोधने विशोधने सर्वपाप
विशोधने सर्वापाय विशोधने शुद्धे विशुद्धे सर्वपापविशुद्धे सर्वकर्मावरण
विशोधने वाहा ॥

## अपरमिता धारणी

ॐ नमो भगवते अपरमितायु ज्ञानसुविनिश्चित तेजोराजाय तथागता
याऽर्हते सम्यक्संवुद्धाय तद्यथा ॥ ओम् पुण्य २ महा पुण्य अपरमित पुण्य
अपरमितायु पुण्य ज्ञानसंभारो पचिते ओम् सर्व संस्कार परिशुद्धे धर्मोद्गते
गगण समुद्गते स्वभाव विशुद्धे महानय परिवारे स्वाहा ॥

## भैषज्यं धारणी

ॐ नमो भगवते भैषज्यं वैदुर्य प्रभकेतुराजाय तथागतायाऽर्हते
सम्यक्संवुद्धाय तद्यथा ॥ ओम् भैषज्यं भैषज्यं महा भैषज्यं सुभैषज्यं परम
भैषज्यं स्वाहा ॥

## आर्य्य करुणामय एकादशमुख धारणी

ॐ नमो रत्नत्रयाय ॥ नमः आर्य ज्ञान सागर वैरोचन व्यूह राजाय तथागता याऽर्हते सम्यक्संवुद्धाय नमः सर्व तथागते भ्यः अर्हतेभ्यः सम्यक्सम्वुद्धेभ्यः नमः आर्य अवलोकिते श्वराय वोधि सत्वाय महा सत्वाहा महा कारुणिकाय तद्यथा ॥ ओम् धर धर धिरि धिरि धुरु धुरु इत्ते वत्ते चले प्रचले प्रचले कुसुमे कुसुमवरे इलि मिलि चिति ज्वलमा पनयेस्वाहा ॥ ओम् मणिपद्मे हुं ॥

## आर्यतारा धरणी

ॐ लोचने सुलोचने तारे तारोद्भवे सर्व सत्वानुकम्पिनि सर्वसत्वोत्तारिणि सहस्त्रभुजे सहस्त्रनेत्रे ओम् नमो भगवत्यैं अवलोकय अवलोकय मां सर्व मत्वानाञ्च हुं हुं फट् स्वाहा ॥

## बज्रसत्व धारणी

ॐ वज्रमन्त्व समय मनुपालय वज्रसत्वत्वेन प्रतिष्ठ दृढोभेभव सुतोष्योमेभव सुपोष्योमेभव अनुरक्तोमेभव सर्वसिद्धि मे प्रयच्छ सर्वकर्म सुचर्मेचित श्रियं कुरु हूं हहहह हो भगवन सर्व तथागत वज्रमामे मुञ्चवज्री भवमहासमय सत्व आः ॥